## संसार भरिका विकासवादीहरु संग केहि प्रारम्भिक प्रश्नः

- **प्रेम आर्य दोहा, कतार**

अल्पवुद्धि तथा चाटुकारहरुले भरिएको हाम्रो जस्तो समाजमा कुतर्कमा आधारित काल्पनिक तथा अवैज्ञानिक विकासवादको प्रमनिकताको विषयमा प्रश्न उठाउनेलाई नै अवैज्ञानिक र कूपमंडूकता मान्ने हरुसंग केहि प्रश्न सोध्न मन लाग्यो। यी प्रश्नहरु प्रारम्भिक नै हुन्, तथ्यपरक, तर्कसंगत तथा वैज्ञानिक विचारले युक्त उत्तर प्राप्त भएमा अन्य प्रश्न पनि गरिनेछः-

**१- शारीरिक विकास सम्बन्धिः**

क- विकासवादी हरुले अमीबा बाट विकसित भएर बाँदर, त्यसपछि शनैःशनैः मनुष्यको उत्पत्ति मान्दछन्।अब भन्नुहोस्, अमीबाको उत्पत्ति कसरो भयो?

ख- यदि कुनै अन्य ग्रहबाट जीवन यहाँ आएको हो भने त्यहाँ उत्पत्ति कसरि भयो? जब त्यहाँ उत्पत्ति हुन सक्छ भने यो पृथ्वीमा किन हुन सक्दैन?

ग- यदि अमीबाको उत्पत्ति रासायनिक क्रियाबाट कुनै ग्रहमा भएको हो भने मनुष्यका शुक्राणु र अण्डाणुको उत्पत्ति पनि यहि प्रक्रियाले किन हुन सक्दैन?

घ- उड्ने आवश्यकता हुँदा प्राणीहरुको पखेटा उम्रिने कुरो भनिन्छ तर मनुष्यको उत्पत्ति भए देखि नै उसलाई उड्ने रहर अथवा आवश्यकता भएर नै वायुयान बनाउने प्रयत्न गरिरहेको छ, तर उसका पखेटा किन उम्रेनन? यदि पखेटा उम्रेको भए वायुयानको आवश्यकता नै पर्ने थिएन|

ङ- शीतप्रदेशमा बस्ने प्राणीहरुका शरीरमा लामा-लामा रौं विकसित हुने कुरो भनिन्छ, तर शीतप्रधान देशमा रहने मनुश्यहरुको पनि भालुका झैं रौं किन आएनन्? उसलाई कम्बल र सिरकको आवश्यकता किन भयो?

च- धरतीमा घाँस सुकेको कारणले अग्ला-अग्ला रुखका पातहरु खाने गर्दा जिराफको गर्दन लामो भएको मानिन्छ, कसैले यो त भनोस् कि कति वर्ष सम्म धरतीको घाँस सुकेको थियो र रुखका पातहरु हरिया रहेका थिए? फेरी बाख्राले आज सम्म पनि दुईटा खुट्टा उचालेर रुखका पात खाइरहेको छ, उसको गर्दन लामो किन भएन?

छ- बाँदरको पुच्छर गायब भएर मनुष्य बन्यो रे..! यो भन्नुस त बाँदरको पुच्छर कसरि गायब भयो? के उसले पुच्छरको उपयोग गर्न छोडेको थियो र ? कसैले भन्न सक्ला कि

बाँदरले आफ्नो पुच्छरको के उपयोग गर्छ? र उसले यो उपयोग किन बन्द गर्नु परेको थियो? यदि यस्तो हो भने मनुष्यका पनि नाक, कान गायब भएर प्वाल मात्र रहनु पर्ने..! मनुष्यले लाखौं-करोडौं वर्ष देखि कपाल र नङ काट्दै आएको छ, तै पनि पुनः उम्रीरहन्छन्, यस्तो किन हुन्छ?

ज- सबै बाँदरहरुको विकास भएर मानव किन बनेनन्? केहि त अहिले सम्म पनि अमीबाकै रुपमा छन्, हामी भने मनुष्य बनिसक्यौं, यो केहो?

झ- भनिन्छ कि सर्पका पहिले खुट्टा थिए, पछी विस्तारै-विस्तारै घिसिएर गायब भए..! अलिकति विचार गर्नुस् त सर्पका खुट्टा कसरि गायब भए ? अन्य खुट्टा भएका सबै प्राणीहरुका खुट्टा कत्ति पनि घिसिएनन्|

ञ- पहिले हड्डी नभएका जनावरहरुका पछी हड्डी बने, पछी उनीहरुलाई हड्डीको आवश्यकता किन भयो?

ट- बाँदर र मनुष्यका बीच बन्ने प्राणीहरुको शृंखला कहाँ गयो?

ठ- विकास मनुष्यमा नै आएर किन रोकियो? कसले यसलाई विराम दियो? के उसलाई विकासको कुनै आवश्यकता छैन?

**२- बौद्धिक तथा भाषा सम्बन्धि विकासः**

क- मनुष्यले विस्तारै-विस्तारै बुद्धिको विकास गरेको भनिन्छ, यदि यस्तो हो भने बाँदर तथा अन्य प्राणीहरुमा बौद्धिक विकास किन भएन?

ख- मनुष्य उत्पत्तिको समयमा धरतीमा केवल पशु-पंक्षी मात्र थिए, तब उसले उनीहरुको व्यवहार किन सिकेन? मानवीय व्यवहारको विकास कसरि भयो? करोडौं वनवासीहरुमा अहिलेसम्म पनि विशेष बौद्धिक विकास किन हुन सकेन?

ग- गाई, भैसी, भेडा, बाख्रा, घोडा, उँट, हात्ती, आदि घरपालुवा पशुहरु करोडौं वर्ष देखि मनुष्यको साथमा छन्, तै पनि उनीहरुले न भाषा सिके, न त मानवीय व्यवहार नै सिके, तर मनुष्यमा मात्र यो विकास कहाँ बाट भयो?

घ- अग्नि तथा दिपकमा जल्न आउने पुतली, किरा-फट्यांग्रा आदि जीवमा करोडौं वर्ष सम्म यत्ति पनि बौद्धिक विकास हुन सकेको छैन कि उनले स्वयंलाई जल्नबाट रोक्न सकुन? तर मनुष्य बाँदर बाट यति बुद्धिमान बनिसक्यो कि मंगलको यात्रा गर्न सफल भयो..? के यत्ति कुरो जान्ने बुद्धि पनि ति विकासवादी हरुमा विकसित भएन? पहिले सपेराले सर्पलाई बीन बजाएर नै समात्ने गर्दथ्यो, आज पनि त्यस्तै गर्दछ, तर सर्पमा यत्ति पनि ज्ञानको विकास हुन सकेन कि ऊ सपेराको पकडमा नआओस..!

ङ- पहिले मनुष्य बल, स्मरण शक्ति एवं शारीरिक प्रतिरोधी क्षमताको दृष्टिमा वर्तमानको अपेक्षा अधिक समृद्ध थियो, आज झनै विकास हुनु पर्ने तर यो ह्रास किन भयो?

च- संस्कृत भाषा जुन सर्वाधिक प्राचिन भाषा हो, यसको व्याकरण वर्तमान समस्त भाषाहरुको अपेक्षा अत्यन्त समृद्ध तथा व्यवस्थित छ, भाषाको दृष्टिले विकासको स्थानमा ह्रास किन भयो?

छ- प्राचिन ऋषि मुनिहरुका ग्रन्थहरुमा भरिएका विज्ञानका सम्मुख वर्तमान विज्ञान अनेकौं दृष्टिले पछी छ भन्ने कुरो सिद्ध भैसकेको छ, यो विज्ञानको ह्रास कसरि भयो? पहिलेका ऋषि-मुनिहरूलाई केवल अन्तःप्रज्ञा द्वारा सृष्टिको ज्ञान हुन्थ्यो, तर आज यो ज्ञान अनेकौं संसाधनहरु द्वारा पनि हुन सकेको छैन, यो उल्टो क्रम कसरि भयो?

खुट्टा हुँदा-हुँदै टाउकाले टेकेर हिड्न रुचाउने तथाकथित विकासवादी महाशयहरुहो, अलिकति सोंच्नुहोस त यदि पशु-पंक्षीहरुमा बौद्धिक विकास हुन्थ्यो भने आज एउटा पनि पशु-पंक्षी मनुष्यको वशमा आउने थिएन | पशु-पंक्षीमा बौद्धिक विकास हुँदैन तर शारीरिक विकास भएर तिनीहरु मनुष्यमा बदलिन्छन् र मनुष्यमा शारीरिक विकास नभएर केवल भाषा तथा बौद्धिक विकास हुन्छ भनेर मान्ने यो कस्तो अज्ञानताले भरिएको सोंच हो? यसको कारण के हो, के कुनै विकासवादीले बताइदिन सक्नु होला?

आज विकासवादको भाषा बोल्नेहरु अथवा श्री हनुमानलाई बाँदर भनेर कहिल्यै नथाक्ने पौराणिक बन्धुहरुलाई वाल्मिकीय रामायणको गम्भीर ज्ञान छैन | वस्तुतः वानर, रिक्ष, गृध, किन्नर, असुर, नाग आदि मनुष्य जाति कै नाना वर्ग थिए | ऐतिहासिक ग्रन्थहरुमा गरिएको प्रक्षेपहरु (मिलावट) लाई चिन्न सक्नु अत्यन्त परिश्रम साध्य तथा बुद्धिगम्य कार्य हो |

उता ति प्रबुद्ध वर्गहरु जसले कुनै वैज्ञानिक संचार माध्यमहरुमा प्रकाशित हुनुलाई मात्र प्रमाणिकताको कसौटी मान्ने गर्दछन्, तिनमा मेरो अति संक्षिप्त विनम्र निवेदन छ कि-

१- "बिग ब्यांग सिद्धान्त" अथवा यसका विरुद्धको अनादि "ब्रह्माण्ड सिद्धान्त" दुवै पक्षका पत्र यहाँ प्रकाशित हुन्छन्, तब कुनचाहिं सिद्धान्त सत्य मान्ने?

२- "ब्ल्याक होल सिद्धान्त" अथवा यसको विरुद्धको यसलाई नमान्ने सिद्धान्त पनि यहाँ प्रकाशित छन्, तब कसलाई मान्ने?

३- ब्रह्माण्डको प्रसार अथवा यसको अप्रसार दुवै सिद्धान्त यहाँ प्रकाशित छन्, तब कसलाई सत्य मान्ने?

यस्ता अनेकौं उदाहरणहरु दिन सकिन्छ, यसको कारण यो हैन कि हामीलाई कुनै एक वर्गविशेष संग सत्यताको प्रमाण लिन लिन अनिवार्य होस् .!

हाम्रो वैदिक दृष्टिमा उचित तर्क, पवित्र गम्भीर उहा एवं योगसाधना (व्यायाम हैन) बाट प्राप्त निष्कर्ष वर्तमान संसाधनहरु द्वारा गरिएका प्रयोगहरु, प्रक्षेपणहरु तथा गणित भन्दा अधिक प्रमाणिक हुन्छन् | यदि प्रयोग, प्रक्षेपण तथा गणितका साथमा सुतर्क तथा उहाको साथ भएन भने वैज्ञानिकहरुको सम्पूर्ण श्रम व्यर्थ हुन सक्छ |

यहि कारणले हो, प्रयोग, परिक्षण, प्रक्षेपण तथा गणितलाई आधार मान्नेहरु तथा ति संसाधनहरुमा प्रतिवर्ष खरबौं डलर खर्च गर्नेहरुको विज्ञानको क्षेत्रमा नाना विरोधी सिद्धान्तहरु वर्षाका च्याउ सरि मनपरि ढंगले मौलाई रहेका छन् र सबैले आ-आफ्नो सिद्धान्तलाई सत्य भन्दै पनि छन् | यदि विज्ञानले सर्वत्र गणित तथा प्रयोगलाई आधार मान्दछ भने कसैले विकासवादमा पनि गणित तथा प्रयोगको आश्रय लिएर देखाउन सक्ला?

यसकारण मेरा सम्मानका योग्य वैज्ञानिकहरु एवं संसारका समस्त प्रवुद्धजनहरु संग अनुरोध छ कि प्रत्येक प्राचिन ज्ञानको अन्धविरोध तथा वर्तमान पद्धतिको अन्धानुकरण गरेर बौद्धिक दासत्वको परिचय नदिऔं | तार्किक दृष्टिको सहारा लिएर नै सत्यलाई ग्रहण तथा असत्यलाई परित्याग गर्ने प्रयास गरौं | अँ, आ-आफ्नो साम्प्रदायिक रुढिवादी सोंचलाई विज्ञान समक्ष तेर्छ्याउने प्रयास गर्नु भने अवश्य आपत्तिजनक छ | अस्तु..

नमस्ते..!

सत्यसनातन वैदिक धर्मको जय..!

[हार्दिक आभारः आचार्य अग्निव्रत नैष्ठिक (वैदिक वैज्ञानिक)]